# विश्व-धर्मको राजमार्ग

विश्वमा धर्मको नाममा जति हिंसा भएको छ, त्यति अरु कुनै बहानामा भएको छैन भनिन्छ ।

वास्तवमा धर्म-तत्वले मनुष्यलाई सम्पूर्ण जीवन र जगत्को ज्ञान गराई मोक्ष प्रदान गर्दछ । तथापि, विडम्बनानै मान्नुपर्छकि त्यही धर्म-तत्वलाई राम्ररी नबुझेको हुनाले वा गलत किसिमले बुझिदिँदा मानव समाज उल्टै युद्ध, हिंस्रकता, त्रासदीको चपेटामा फस्न पुगेको छ । कमी धर्म-तत्वमा रहेको छैन, बरु मानव धारणामा रहेको छ समस्याको मूल जरो । धर्मको नाममा मच्चिएको रडाको देखेर अधार्मिक नास्तिक वा धर्म-निरपेक्ष बन्नु समस्याको समाधान पटक्कै होइन । 'कण्टकेनैव कण्टकम्' भनेझैं समस्या समाधान गर्ने साधनपनि धर्म मात्र हुनसक्छ ।
यसकालागि सर्वप्रथम त विश्व-धर्मको धारणा प्राथमिक आवश्यकता हुनेछ । विश्व-धर्मको धारणामा सनातन वैदिक धर्मले गर्न सक्ने योगदान अद्‌वितीय एवं अनुपम छ । विश्व-धर्मको मजबुत जग सनातन वैदिक धर्म परम्परालेनै सुनिश्चित गर्न सक्छ भन्ठान्नुको समुचित कारणहरू छन् ।
बौर्द्धधर्म र जैनधर्म दुवैको आधार प्राचीन वैदिक हिन्दू-दर्शन 'सांख्य' हो भन्ने विचार केही अध्येताहरूको रहेको छ । जसरी बौद्धजन बुद्ध -जागृत) का अनुयायी हुन्, उसरीनै जैन मतावलम्बीहरू 'जिन' -विजेता) का अनुयायी कहिन्छन् । त्यसो त 'बुद्ध'हरू धेरै छन् तापनि सामान्यतया यस उपाधिले हामी सिर्द्धार्थ गौतमलाई बुझदछौं । महावीर वर्धमानलाई 'जिन' उपाधिले हामी चिन्दछौं र उहाँ जैनहरूका अन्तिम तीथङ्कर हुनुहुन्छ । अचेल 'हिन्दू' विशेषणले बढी चिनिने 'वैदिक संस्कृति'का अनेक धाराहरूका झैंनै बौद्धमत र जैनमतका पनि आ-आफ्नै विशेषता रहेका छन् ।
सर्वपल्ली राधाकृष्णन्ले उल्लेख गर्नुभएको छ – बर्नूफको विचारमा बौर्द्धधर्मले केबल सांख्यको सिद्धान्तलाईनै क्रियात्मक रूप प्रदान गरेको हो; र बेबरका अनुसार त सांख्यदर्शनका ग्रन्थकार कपिलमुनि र गौतमबुद्ध एउटै व्यक्ति रहेको हुनुपनि सम्भव छ । प्रकृतिको नित्यत्वसँग सम्बन्ध राख्ने केही विषय, द्रव्यहरूको तत्व एवम् अवसान आदि सांख्य र बौद्ध दर्शनमा समान रहेको विल्सनको मान्यता छ । यसैगरी, जैकोबी र गार्बका अनुसार, सांख्यको द्‌वैत एवम् तत्वहरूको गणनासम्बन्धी स्थापना बौर्द्धधर्मको तुलनामा धेरै प्राचीन हो । राधाकृष्णन्का अनुसार, सृष्टिरचना सम्बन्धी सांख्यको कल्पना र बौर्द्धधर्मको सोही सम्बन्धी कल्पनामा समानताहरू छन् । सांख्यदर्शनका प्रणेता मानिएका ऋषिवर कपिलमुनि गौतमबुद्धभन्दा अनेक पिढी अघि जन्मनुभएको तथा बुद्धकालीन समयमा सांख्यको विचार प्रचलनमा रहेको सन्दर्भ यहाँनेर उल्लेख्य छ ।
कोलब्रुकले आफ्नो अध्ययनमा पाएकि जैनमत र सांख्यदर्शनका धेरै अंग एक-आपसमा मिल्दाजुल्दा रहेछन् । यी दुबै दर्शन प्रकृतिलाई अनादि एवम् अनन्त मान्दछन् र संसारको निरन्तरतामा विश्वास गर्दछन् । एकको द्‌वैतवाद अर्कोको द्‌वैतवादसँग भिन्न नभएको राधाकृष्णन्को मतपनि यहाँनेर उल्लेख्य छ ।
बौद्ध तथा जैन दर्शनहरूलाई 'अवैदिक' भन्ने प्रचलन छ । यस शब्दको आधार लिएर कतिपय उपबुज्रुकहरूले बौद्ध, जैन र वैदिक दर्शनहरू एक-अर्काका विरोधी नै हुन् कि भन्ने भ्रम फैलाएका पनि छन् । तर, यथार्थता के हो भने यिनीहरूबीचमा भएको भेद 'विरोध' होइन; बरु जीवन र जगत्लाई व्याख्या गर्ने निजात्मक विशिष्टतामात्र हुन् । यदि जैन तथा बौद्धमतहरूका आध्यात्मिक तहको विश्लेषण गर्ने हो भने तिनमा वैदिक यथार्थता नै प्रतिबिम्बित भएको पाइन्छ । यता, शिख धर्मको सन्दर्भमा चर्चा गर्नुपर्दा यसको सनातन वैदिक धर्मसँगको नाता बारेमा सबै तथ्यहरू छर्लङ्गै छन् । पूज्य गुरुदेवहरू तेगबहादुर तथा गोविन्दसिंहले हिन्दूत्वको निमित्त गर्नुभएका योगदानहरू इतिहासमा सुनौला अक्षरले अंकित भइसकेका छन् ।
विविधताको दृष्टिले विचार गर्दा प्राचीन आर्य वैदिक हिन्दू-संस्कृति कालान्तरमा हजार भन्दा बढी सम्प्रदाय, शाखा-प्रशाखाहरू एवम् मत-मतान्तरहरूमा विस्तारित भएको छ । समयक्रममा शैव, वैष्णव, बौद्ध, जैन आदिजस्ता हिजो एउटै सम्प्रदाय मानिनेहरूमा पनि अनेकौं प्रशाखाहरू विस्तारित भएका देखिएकै छ । तर आधारभूत रूपमा तिनका बीचमा साम्यता पाउन नसकिने होइन । मुख्य कुरो त मिलनविन्दुको आधार खोज्ने सदाशय हुनु जरुरी छ ।
अझ, पछिल्ला दिनहरूमा त संसारका प्रायः सबै धार्मिक सम्प्रदायमा प्रचलित -वा मान्यताप्राप्त) राम्रा-राम्रा पक्षहरू छानेर आफूले पृथक् विचारधारा विकसित गर्ने प्रयासहरूपनि हुन थालेका छन् । 'धर्मतत्व'लाई धारण गर्ने प्रयासका क्रममा यस्ता अनेक सम्प्रदायहरू भविष्यमा पनि आउने नै छन् । यसलाई स्वाभाविक तबरले लिनुपर्ने हुन्छ ।
वैदिक धर्म एवम् दर्शनको विस्तृति भारतवर्षम्ममात्रै होइनकि विश्वका अरु समृद्ध संस्कृति सभ्यतापनि यसबाट लाभान्वित भएका छन् । प्रसिद्ध इस्लामी विद्वान हजरत साज रहमानी जस्ता व्यक्तित्वहरू त के भन्दछन् भने इस्लामको आधारपनि हिन्दूधर्म नै हो; तर इस्लाममा घुसेका हिंस्रक, युद्धपिपासु एवम् खुनी प्रकृतिका लडाकूहरूका कारणलेमात्र दुइ धर्मबीचमा भेद तथा द्‌वेष हुन आएको हो । स्वयम् येशू ख्रिस्ट (जीसस क्राइस्ट)ले काश्मीरमा आई पढी-गुनी ज्ञान हासिल गरेर इजरायल फर्केपछि 'नयाँ करार'को जग हालेको तथ्यपनि पत्तो पाइसकिएको सन्दर्भमा इर्साईहरूले सनातन वैदिक धर्मको नेतृत्व अस्वीकार गर्नु पर्ने कुनै कारण छैन ।
व्यक्ति वा समूह विशेषको तात्कालिक व्यवहारलाई हेरेर वा धर्मका नाममा हुनथालेका अचेलका तुच्छ स्तरका जालीझेली राजनीतिक बबण्डरमा चक्करिएर होइनकि दार्शनिक एवम् सैद्धान्तिक अवधारणागत तहसम्मनै पुगी तथ्यहरूको समुचित विश्लेषण गरिनुपर्छ । यदि विश्व-मानवसमुदायको कुनै साझा धर्म-चेतना हुनसक्छ भने (हुन्छ र

हुनुपर्छ भन्छु म) -त्यो आधार वैदिक सनातन धर्मले प्रदान गर्न सक्दछ । सनातन वैदिक आर्य संस्कृतिको आधारभूत प्रस्थापनासम्म नपुगी विश्व-धर्मको आत्मसातता सम्भव कसरी होला र ! अस्तु ।